

(वीर सहिदहरूको संस्मरणमा कीर्तिपुर,काठमाडौंबाट प्रकाशित )

# सहिद

SAHID WEEKLY साप्ताहिक





वर्ष ९, अंक ४३, (पूर्णाङ्क ३६७) पृष्ठ -६ ने.सं. ११३३ पोहेलागा, त्रयोदशी, वि.सं. २०६९ माघ २६ गते शुक्रबार FEB. 2013 मूल्य रु. ५।-


## भक्तपुरमा अङ्ग प्रत्यारोपण केन्द्र

भक्तपुर । भक्तपुरमा अंङ्ग प्रत्यारोपण केन्द्र संचालन भएको छ। मृगौला सफलतापूर्वक प्रत्यारोपन गरेको छ। फागुनबाट मृगौलाको डाइलोसिस सेवा र निकट भविष्यमै कलेजो, आमासय, हाडको मासि, मुटु र फोक्सो समेत प्रत्याारोपन गर्ने लक्ष्य लिएको छ।

विदेशमा २० लाख खर्च लाग्ने मृगौला प्रत्यारोपनको भक्तपुर केन्द्रमा १ लाखको सेवा शुल्क र ४ लाखको औषधी लगायतका सामग्री समेत गरी ५ लाखमा शल्यक्रिया हुन्छ।

नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें ( रोहित) ले भक्तपुरमा सञ्चालन प्रारम्भ मानव अङ्ग प्रत्यारोपण केन्द्रको मंगलबार निरीक्षण गर्नुभएको छ।

दुई हप्ता अघि सफल मृगौला प्रत्यारोपण र फागुनबाट मृगौलाको डाइलाइसिस सेवा दिँदै आएको केन्द्रबारे अध्यक्ष रोहितले चासोपूर्वक जानकारी लिनुभयो। उहाँले मृगौला प्रत्यारोपण गरी सघन उपचारकक्षमा स्वास्थ्य लाभ


**क्रमश: ५ पृष्ठमा**


## सातगाउँले जात्रा अभिलेखीकरण छलफल



कीर्तिपुर। कीर्तिपुर लगायत काठमाडौंको दक्षिण पश्चिम भेगका गाउँहरुमा मंसिर महिनामा हुने प्रख्यात ऐतिहासिक सात गाउँले जात्राको महत्वलाई जगेर्ना गर्न अभिलेखीकरण गर्ने पहलका


**क्रमश: ५ पृष्ठमा**


## मल कारखाना बन्ने

काठमाडौं । जनकल्याण मल्टी प्रोडक्ट लिमिटेड कम्पनीले पाँचखालमा रसायनिक मल कारखाना स्थापना गर्ने भएको छ।

‘सम्पूर्ण नेपालीहरू एक होऔं, नेपालमा नै


**क्रमश: ५ पृष्ठमा**




# कीर्तिपुर नपाको आफ्नै भवन बन्ला ?

कीर्तिपुर नगर पालिकाको १८ औं नगर परिषद्ले आ.व. २०७०/०७१ को बजेट विनियोजनमा बाह्य स्रोतबाट नगर विकास कोषबाट ३ करोड अनुदान ऋण प्राप्त गर्ने अनुमान गरिएको छ । यसभन्दा अघि पनि शान्ति मन्त्रालयबाट द्वन्द पीडित क्षेत्र भौतिक निर्माणको लागि कीर्तिपुर नपाको लागि ३ करोड ५० लाख आउने पक्का भएको थियो ।

त्यसको लागि नपाबाट तत्कालको लागि जग्गा देखाउन मंगल माविस्थित कान्जीको जग्गा देखाएर प्रक्रिया शुरु गरेको थियो । त्यो आश्वासन असफल भयो । वास्तवमा कीर्तिपुर नपा द्वन्द पीडिट क्षेत्र नै थियो । पटक पटक नपामा र वडा कार्यालयमा वम पडकेकै थियो भौतिक संरचना क्षति भएको थियो । त्यस दृष्टिले पनि शान्ति मन्त्रालयबाट विना कुनै झन्झत सामान्य प्रक्रियाबाट छुट्याइएको बजेट विनियोजित गर्नुपर्ने थियो ।

अहिले पनि आगामी आ.व. को लागि नगर विकास कोषबट प्राप्त हुने अनुदान ऋण हात पार्न नगरपालिका विशेष चनाखो हूनु जरुरी छ । जनप्रतिनिधिविहीन अवस्थामा कर्मचारीहरुले मात्र त्यति चासो नदिदा हात परेको समेत गुम्ने भएकोले राजनैतिक दलहरु पनि सक्रिय हुनु जरुरी छ ।

**कहाँ बनाउने ?**

आ व. २०७०/०७१ मा नगरपालिका भवन बनाउने बजेट राखेपछि कहाँ बनाउने भन्ने विषयमा छलफल शुरु गर्नुपर्ने बेला भइसक्यो ।

हाल वस्दै आएको नपा कार्यालय अपायक ठाउँमा भयो भन्दै आएका पूर्व जनप्रतिनिधि, कीर्तिपुरवासीले अब बन्ने भवन सवैको केन्द्र भागमा पायक पर्ने गरी बनाउनुपर्नेवारे नगाउँमा छलफल शुरु गरेको छ ।

कीर्तिपुर नयाँगेट नजिकै त्रिविको जग्गामा, हुनमानघाट चिखु फाँट, पाँगाको दन सार्वजनिक जग्गामा बनाउँदा राम्रो हुने प्रस्ताव अगाडि आएकोछ। हनुमान घाट चिखु फाँट नगर विकास क्षेत्र (टाउनप्लान) भित्र पर्ने र पाँगाका दन सार्वजनिक पोखरी नै भएकोले सवैलाई पायक पर्ने, यातायातको सुविधालाईसमेत ध्यान दिने हो भने त्रिविको जग्गामा उपयुक्त देखिन्छ ।

कीर्तिपुर नपाको भवन नगरवासीको आफ्नै भवन हुने भएकाले नपा भवन कहाँ बनाउने वारे छलफल अहिले देखि चलाउनु राम्रो हुने छ ।

## पाँगा दोबाटो-चोभार गेट सडक: जगेडा कोष स्वीकृत

जगेडा कोष संचालन कार्यविधि २०६६ बमोजिम कीर्तिपुर नगरपालिकाले प्रस्तावित ३ वटा आयोजना स्वीकृत भएको छ ।

स्थानीय विकास कोष संचालन समितिको पुस ३ गते बसेको बैठकबाट स्वीकृत भएको आयोजनामा वारुण यन्त्र खरिद, पाँगा दोबाटो-ढोकासी-चोभार गेटसम्मको सडक सुधार र नयाँबजार-मंगल मावि-बाघभैरव मन्दिर सडक सुधार को लागि २ करोडको आयोजना परेको हो ।

कीर्तिपुर नगरपालिकाका कार्यकारी अधिकृत रामलाल श्रेष्ठले दिनुभएको जानकारी अनुसार कुल लागत २ करोडको आयोजनामा वारुण यन्त्र खरिद गर्न ७७ लाख, पाँगा दोबाटो-चोभारगेटको सडकको लागि ६७ लाख र नयाँबजार-बाघभैरवको लागि ५६ लाख रहेको छ । लागत सहभागितामा संचालन हुने सो आयोजनाको लागि नपाले वारुण यन्त्रको लागि १०% र सडक सुधारको २ वटा योजनामा ५० प्रतिशत वेहोरिनेछ ।

लामो समयदेखि जीर्ण रहेको पाँगा दोबाटो-चोभारगेट र मंगल मावि-बाघभैरव सडक सुधारले नपाको सराहनीय गर्नु पर्दछ ।

अब आगामी जगेडा कोष भाजँगल एन्चो सडक, पाँगा ईचाखेल-जाखा-भत्केपाटी सडक सुधार तथा ढल निकास, अजय मार्ग, पाँगाको पूर्वीय भागको ढल निकासलाई जगेडा कोषमा स्वीकृतिको लागि सक्रिय हुनुपर्ने देखिन्छ ।




पाँगा दोबाटो-चोभार गेट जोड्ने बाटो

## एमाओवादी सुधारिएको कम्युनिष्ट पार्टीमा परिणत

## आन्दोलनबाटै सत्ता झार्ने : विपक्षी , २० वर्षसम्म सत्तामा बस्ने : सत्तारुढ

नेपालको कम्यूनिष्ट आन्दोलनमा २१ वर्षपछि एकताको सातौं महाधिवेशन गर्न सफल र १० वर्षे जनयुद्ध गरी शान्तिपूर्ण अवतरण गरेका एकीकृत नेकपा माओवादी सुधारिएको कम्यूनिष्ट पार्टीमा परिणत भएको छ ।

पूँजीवादी शासन सत्ता विध्वंस गर्ने र नेपालमा सर्वहारा वर्गको शासन सत्ता नयाँ जनवाद, समाजवाद स्थापना गर्ने लक्ष्यमा साथ जन्म भएको नेकपा माओवादी गणतन्त्रसँगै कम्यूनिष्टबाट पलायन भएका छन् । ६३ सालको जन आन्दोलनसँगै संविधानसभाको ठूलो दल बनेका एमाओवादी पूँजीवादी सत्तामा नराम्ररी फसेपछि सातौं महाधिवेशनबाट वर्ग संघर्ष, विद्रोह, जनयुद्ध सबै त्याग गरेका छन् ।

महाधिवेशनमा पार्टीका अध्यक्ष प्रचण्डले देशी र विदेशी सबै भाइचारा पार्टीको सामुन्ने र अध्यक्षको प्रतिवेदनमा समेत फेरी जनयुद्ध गर्नु भनेको सहिद र नेपाली जनताको अपमान हुने शंखघोष गरे ।

हेटौंडामा भएको पार्टीको महाधिवेशनमा पार्टी अधयक्ष प्रचण्डले उद्घाटन मन्तव्यका क्रममा आन्दोलनरत एमाले र काँग्रेसलाई पट मूर्खको संज्ञा दिई यदि आन्दोलन रोकी एमाओवादीले जेठमा गर्ने भनेको निर्वाचनमा भाग नलिने हो भने मर्ने बेला कमिलाको प्वाँख आए जस्तै हुने चेतावनी दिँदै त्यसको फैसला जनताले गर्ने भन्नुभयो । कार्यक्रममा आन्दोलनरत दल एमाले-काँग्रेसका शीर्ष नेता अनुपस्थित भएपनि पार्टीका जिम्मेबार नेता रामचन्द्र पौडेल र बामदेव गौतमले पार्टीको सम्मेलनको सफलताको कामना गर्नुभयो ।

**बामदेवको फुस्रो भाषण**

बामदेवले केही दिन अघि एक कार्यक्रममा वर्तमान प्रधानमन्त्रीलाई गोली हान्ने त होइन जेलमा हाल्ने उद्घोष गरेका थिए । जसको पार्टीका उपाध्यक्षलाई जेल हाल्ने उद्घोष पनि गर्ने अनि पार्टीको सम्मेलनको सफलताको पनि काम गर्ने बामदेव भाषण फुस्रो र केटाकेटीपन सावित भएको छ ।

आन्दोलन पनि गर्ने, त्यही दललाई शुभकामना पनि दिने विपक्षी दलको बौद्धिक धरातल प्रस्ट देखाएको छ ।


**क्रमश: ५ पृष्ठमा**

## ऐतिहासिक जनअन्दोलन २०४६ चैत २० गते शहादत अमर सहिद


लनबहादुर महर्जन वि सं. २००६ माघ


हिराकाजी महर्जन वि सं. २०१७ माघ


राजमान माली वि सं. २०२५ मंसिर


राजेन्द्र महर्जन वि.सं. २०३० चैत


# सहिद साप्ताहिक

वर्ष ९, अंक ४३, २०६९ माघ २६ गते शुक्रबार

शंखापुर प्रकाशन समूहको लागि

सम्पादक/प्रकाशक: नारायण महर्जन

विज्ञापन/वितरक: नेल्सन

व्यवस्थापक: प्रताप, वीरुण

कम्प्यूटर टाइप/सेटिङ: श्याम महर्जन

सम्पर्क कार्यालय: जहुँ हिटी युवा क्लव - ११ पाँगा, कीर्तिपुर, फोन नं. ४३३०५८३

E-mail:- kipushahid@hotmail.com

www.kipushahid.blogspot.com

www.ourkirtipur.com.np

मुद्रण : शर्मिला प्रिन्टर्स्, डल्लु, काठमाडौं


## सम्पादकीय ......

## राजनैतिक अन्योलको निकासः स्वतन्त्रको नेतृत्वमा सरकार

देशका प्रमुख दलहरुबाट देश र जनताको हितमा त्याग र सेवा गर्न नसकेको कारण राजनैतिक अन्योल झनझन बल्झिँदै गैरहेको छ ।

राजनैतिक अन्योलको समयमा विदेशी चलखेलले प्रसय पाइरहेको छ । संविधानसभाको अवसान भएको पनि आठ महिना भैसक्यो । प्रमुख चार राजनैतिक दलहरु राजनैतिक निकासको लागि सहमति हुन सकेको छैन । राष्ट्रपतिबाट ९ पटकसम्म समयसीमाको आह्वान गर्दा पनि असफल भयो सहमतिको सरकार । अहिले विपक्षीहरु सडक आन्दोलनमा उभिएपछि दलीय सहमतिको सम्भावना धेरै टाढा पुगेको छ ।

नेपालको राजनीतिक इतिहासमा ४६ सालदेखि संसदीय अभ्यास प्रधानमन्त्रीको प्रत्यक्ष नेतृत्वमा संचालित रह्यो । गणतन्त्रसँगै राष्ट्रपतिको व्यवस्थामा पनि कार्यकारी अधिकार प्रधानमन्त्री मै निहित रहेको र आफ्नै दलीय मन्त्रीहरुको भागबन्दाले देशको यो अवस्थामा पुगेको सबैमा जगजाहेर छ । त्यसैले नेमकिपाले देशमा राष्ट्रपतिलाई कार्यकारी अधिकार दिनुपर्ने आफ्नो घोषणा पत्रमा उल्लेख गरी देशको विकासको लागि स्वतन्त्र तटस्थ बुद्धिजीवीहरुलाई मन्त्रिमण्डल गठन गर्नुपर्ने आवाज उठाएको हो ।

अहिले वर्तमा अन्योलको लागि पनि नेमकिपाले राष्ट्रपतिमार्फत स्वतन्त्र तटस्थ व्यक्तिको चुनावी सरकार गठन गरी संसदीय निर्वाचन गर्नुपर्ने उत्तम उपाय दिएका छन् ।

मुलुकका प्रमुख दलले अन्ततोगोता यो उपायलाई अवलम्बन गरिएन भने नेपाल झनझन असफल राष्ट्र हुनेमा शंका छैन ।

स्वतन्त्र र तटस्थ व्यक्तिको नेतृत्वमा सरकार गठन गरी चुनावमा भाग नलिने, बुद्धिजीवीहरुको सरकार गठन गरेमा अहिले विरोधमा रहेका र सत्तारुढको लागि मान्य हुनेछ । त्यसको लागि अब न्यायप्रेमी, विवेकशील नेपाली जनताले दवाव सृजना गरी निकास निकाल्नु जरुरी ठान्दछु ।

# प्रचण्ड र बाबुरामको फेरिँदै आएको विचार

– प्रज्ज्वल

सत्ता गठबन्धन मधेसी मोर्चाले माघ ११ गते वर्तमान राजनीतिक द्वन्द्व गतिरोधको एकमात्र निकास संविधानसभाको निर्वाचनमात्र भएको निर्णय गऱ्यो । लगतै कामचलाउ प्रम बाबुरामले मधेसी मोर्चाको निर्णयलाई समर्थन गर्दै ट्विटरमा लेखे - 'अबको राजनीतिक निकास संविधानसभाको निर्वाचन नै हो ।' गएको पुस १२ गते बसेको सत्तारुढ गठबन्धन बैठकले पुस २५ गतेभित्र नयाँ निर्वाचनमा सहमति हुन नसके संविधानसभाको पुनःस्थापना प्रस्ताव उठान गरेर जाने निर्णय गरेको थियो । पुस २६-२८ गतेको एमाओवादीको महाधिवेशन समितिको बैठकमा प्रचण्डले 'पुनःस्थापनामा नै जोड गरेर जाऔं' भनेको र सोही अनुरुप यही माघ २१-२५ सम्म हेटौंडामा हुने महाधिवेशन प्रतिवेदनमा अबको राजनीतिक निकास संविधानसभाको पुनःस्थापना नै भएको उल्लेख गरेका छन् ।

प्रचण्ड कटुवाल काण्डमा प्रमबाट राजिनामा गरेदेखि पार्टीमा कमजोर नै छन् । माघ ८ गते पार्टीको गोरखा जिल्ला सम्मेलनमा गएका प्रचण्डले भने- 'नयाँ विकल्पको रुपमा म पनि प्रधानमन्त्री हुन तयार छु । बाबुरामजीलाई मान्दै नमान्ने हो भने प्रचण्डमा सहमति गरौं न त' । प्रचण्डको भनाइलगत्तै प्रम बाबुरामले ताप्लेजुङ्गमा माघ ९ गते सैद्धान्तिकरुपमा ठूलो पार्टीको नेताको हैसियतले उहाँ (प्रचण्ड) हुन सक्ने हो तर व्यवहारिक रुपमा त्यो सम्भव छैन । वैधानिक प्रम मै हुँ । हिजो गोरखामा हामी दुईजना सँगै थियौं । पत्रकारले सोध्दा उहाँले ठट्टा गरेर म किन प्रम हुन नसक्ने भन्नुभएको हो ।' त्यसपछि प्रचण्डले पनि आफू प्रम हुने कुरा ठट्टामात्रै भएको स्वीकार गर्दै सञ्चारले साँचो मानेको स्पष्टीकरण दिए । प्रचण्डको भनाइ ठट्टा नै भएको स्वीकार्दै एमाओवादीका एक नेता गिरिराजमणी पोखरेलले एउटा एफएममा बोले - 'नेकाका गणेशमान सिंह पनि ठट्टा गर्थे, प्रचण्डले पनि ठट्टा गरे ।'

प्रचण्डले बाबुरामलाई प्रमबाट हटाउन चाहेको देखिन्छ तर बाबुरामको पछाडि भारतीय एकाधिकार पूँजी र शासक वर्ग, नेपाली सेना र मधेसी मोर्चाको समेत समर्थन रहेको हुँदा प्रचण्डको केही नलागेको बताइन्छ । कटुवाल बर्खास्तीमा असफल भएका प्रचण्डले 'विदेशी प्रभू' भनी अमूर्त नारा लगाएर भारतीय शासक वर्ग र विस्तारवादको विरुद्ध आन्दोलनको नेतृत्व गरे । तर भारतीय एकाधिकार पूँजीको साथ र सहयोगविना आफू पुनः प्रम बन्न नसक्ने भएकोले माघ १३ गते कैलाली पार्टी सम्मेलनमा नयाँ जनवाद होइन, जनवादी पार्टी क्रान्ति गर्ने बताए र भने- 'अब हामीले अर्ध औपनिवेशिक र अर्ध सामन्ती अवस्था भनेर उल्लेख गरेका छैनौं, महाधिवेशन प्रतिवेदनमा ।'

प्रचण्डले जनवाद र जनवादी क्रान्ति अलग भएको भ्रम जनतामा छर्न खोजे । जनवाद, जनतन्त्र, प्रजातन्त्र, लोकतन्त्र, लोकशाही, आदिको अंग्रेजी शब्द 'डेमोक्रेसी' नै हो । माओवादी अहिले पूँजीवादी प्रजातन्त्र भित्रको पूँजीवादी सरकारको नेतृत्वमा छ । यथार्थमा कम्युनिष्टहरू पूँजीवादी सरकारमा जाँदैन । सडकबाटै पूँजीवादी सरकारलाई अन्त्य गर्छ ।

सन् १९१७ को फ्रेबुअरी क्रान्तिले रुसको जारतन्त्रलाई समाप्त गऱ्यो तर करेन्स्कीको नेतृत्वमा पूँजीवादी सरकार गठन भयो । पूँजीवादी सरकारमा कम्युनिष्ट दावी गरेका संशोधनवादी र अवसरवादी मेन्शेविकहरू गए । लेनिनको नेतृत्वमा रहेको बोल्शेविकहरू समाजवादी क्रान्तिको लागि जनतामाझ गए र अक्टोबर समाजवादी क्रान्ति सम्पन्न गरे ।

नेपाल २०१७ सालदेखि नै भारतको नवउपनिवेशको रुपमा छ । दिल्ली सम्झौतामा हस्ताक्षरपछि सुरु भएको नवउपनिवेशको प्रक्रियालाई एमालेले २०५३ सालमा महाकाली सन्धीमा सहीछाप गरेर समर्थन गऱ्यो भने एमाओवादीले बिप्पा सम्झौता गरेर समर्थन गऱ्यो । यस कारण एमाले भाइ काँग्रेस भयो र एमाओवादी भाइ एमाले भयो ।

अहिले नेका, एमाले र एमाओवादीको प्रमको झगडा कुनै नीतिको लागि होइन, कसले बढी भ्रष्टाचार गर्ने भनेमामात्र सीमित छ ।

प्रम बाबुरामले ट्विटरमा लेखे- 'बिहारजस्तै मलाई पाँच वर्षसम्म बहुमतीय सरकार चलाउन दिनु, यतिमा निकाल्न सकिनँ भने गोली हाने हुन्छ ।' प्रचण्डले भने- '२०४१ सालको महाधिवेशनले ल्याएको परिवर्तन (गणतन्त्र) लाई अब (माघ) को महाधिवेशनले पूर्णता दिनेछ ।'

सोभियत संघको नेतृत्वमा आएका संशोधनवादी नेता ख्रुश्चेभले सन् १९६१ मा २० वर्षभित्र रुसलाई समाजवादबाट साम्यवादमा पुऱ्याउने बताएका थिए । तीस वर्षपछि अर्थात् सन् १९९१ मा रुसमा पूँजीवाद पुनःस्थापना गरियो र देश १५ टुक्रामा विभाजन गरियो । यसकारण प्रचण्ड र बाबुरामको आत्मनिर्णयसहितको एक मधेस एक प्रदेश र पहाडमा जातजाति र भाषाभाषीको आधारमा संघीय राज्यले देश टुक्रिने छ ।

नेपालका अहिलेका शासक नेताहरू भारतीय विस्तारवादको मुख्यमन्त्री र गभर्नरमा परिणत हुनेछन् र नेपाली लेण्डुप दोर्जेको रुप धारण गर्नेछन् । यसकारण संविधानसभाको निर्वाचन र पुनःस्थापना होइन, संविधानसभाको बाँकी काम सम्पन्न गर्ने गरी संसदको निर्वाचन गर्नुपर्छ ।

# एकतीस टेलिभिजनलाई प्रसारणका लागि अनुमति

काठमाडौं । सूचना तथा सञ्चार मन्त्रालयबाट पुस मसान्तसम्म ३१ वटा टेलिभिजनले प्रसारणका लागि अनुमतिपत्र लिएका छन् ।

मंसिरसम्ममा ३९ वटा टेलिभिजनले अनुमतिपत्र प्राप्त गरेकामा तीमध्ये राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ९ (क) ले तोकेको अवधिभित्र प्रसारण प्रारम्भ नगर्ने आठ टेलिभिजनको अनुमति रद्द गरिएको छ ।

सूचना तथा सञ्चार मन्त्रालयमा सोमबार आयोजित प्रवक्ता पत्रकार भेटघाट कार्यक्रममा सो मन्त्रालयका प्रवक्ता नारायणप्रसाद सञ्जेलले ग्लोबल नेपाल नेटवर्क, भूमि टेलिभिजन नेटवर्क प्रालि, म्यूजिक टेलिभिजन नेपाल, मकालु मिडिया प्रालि, सनराइज टेलिभिजन प्रालि, भ्वाइस अफ युथ टेलिभिजन, एरिना टेलिभिजन प्रालि र मधेशका लागि सञ्चारको प्रसारण अनुमतिपत्र रद्द गरिएको जानकारी दिनुभयो ।

पुस महिनासम्म ५१२ वटा एफएमले प्रसारण अनुमति पाएकोमा ३४४ वटा मात्र नियमित प्रसारणमा रहेको उल्लेख गर्दै उहाँले पुस महिनासम्ममा ७६२ वटा केबुलले प्रसारणको अनुमति प्राप्त गरेको बताउनुभयो ।

चलचित्रकर्मीहरूसँग सम्झौता भई चलचित्रकर्मीको आन्दोलन टुङ्गिएको जानकारी दिँदै प्रवक्ता सञ्जेलले चलचित्रकर्मी कल्याण कोषमार्फत् ४ जना चलचित्रकर्मीलाई मासिक वृत्ति प्रदान गर्ने कार्यलाई निरन्तरता दिइएको उल्लेख गर्नुभयो ।

नेपाल पत्रकार महासंघको भवन निर्माण गर्न रू. १ करोड अनुदान उपलब्ध गराउने विषयमा मन्त्रिपरिषद्मा प्रस्ताव पठाइएको र सो सम्बन्धमा मन्त्रिपरिषद्बाट निर्णय भएअनुसारको रकम महासंघलाई उपलब्ध गराउन निकासाका लागि अर्थमन्त्रालयमा पत्राचार भइसकेको उहाँले जानकारी दिनुभयो ।

प्रवक्ता सञ्जेलका अनुसार आर्थिक वर्ष २०६८/६९ का लागि पत्रपत्रिका वर्गीकरण प्रयोजनका लागि ८७६ वटाले आवेदन दिएको र आ.व. २०६७/६८ को पत्रपत्रिकाको वर्गीकरणको लागि मूल्याङ्कन गर्ने कार्य भइरहेको छ ।

राष्ट्रिय योजना आयोगको सचिवालयका सहायक प्रवक्ता सागर आचार्यले राष्ट्रिय औद्योगिक गणना (प्रत्येक पाँच/पाँच वर्षमा हुने) को तथ्याङ्क सङ्कलन गर्ने कार्य सुरू गरिएको जानकारी दिँदै राष्ट्रिय कृषि गणना २०६८ को नतिजा असार १५ भित्र प्रकाशनमा ल्याइने जानकारी दिनुभयो ।

# मानव अधिकार वर्ष पुस्तकबारे पूर्वसमीक्षा

ललितपुर । मानव अधिकार हनन तथा दण्डहीनता अन्त्यका लागि राजनीतिक प्रतिबद्धताको खाँचो औंल्याइएको छ ।

अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ललितपुरले मंगलबार आयोजना गरेको नेपाल मानव अधिकार वर्ष पुस्तक-२०१३ को पूर्व समीक्षा गोष्ठीमा वक्ताहरूले सो आवश्यकता औंल्याउँदै मानवअधिकार तथा दण्डहीनताका घटनामा आरोपीलाई राजनीतिक संरक्षण हुने गरेकोले यस्तो घटना बढिरहने बताएका छन् ।

कार्यक्रममा नेपाली काँग्रेस ललितपुरका सचिव रविन्स शर्माले दण्डहीनता अन्त्यका लागि सरकार नै अग्रसर हुनुपर्नेमा जोड दिनुभयो ।

कार्यक्रममा जिल्ला विकास समिति ललितपुरका पूर्वसभापति माधव पौडेल, मध्यमाञ्चल क्षेत्रका इन्सेक संयोजक कृष्ण गौतमलगायतले मानवअधिकार उल्लङ्घनका विभिन्न पक्षबारे बोल्नुभएको थियो ।

सन् २०१२ मा ललितपुरमा भएका विभिन्न घटनालाई समावेश गरी ललितपुर इन्सेकले पहिलो पटक मानवअधिकार वर्ष पुस्तक प्रकाशन गर्न लागेको हो ।

ललितपुरमा भएका घटनाहरूमा गत जेठ १८ गते बागमती किनारामा सर्वोच्च अदालतका न्यायाधीश रणबहादुर बमको अज्ञात समूहबाट भएको हत्या, नख्खु जेलको 'ग' श्रेणीको जेलमा राखिएको बन्दीको अवस्था, नेकपा (माओवादी) कार्यकर्ताबाट असोज महिनामा स्थानीय घुसेल विद्यालयका शिक्षकमाथि भएको कुटपिट, पुसमा कुपण्डोलस्थित एक क्याम्पसमा नेविसंघका कार्यकर्ताबीच भएको झगडा, आदिवासी जनजाति संयुक्त संघर्ष समितिले आयोजना गरेको उपत्यका बन्दका क्रममा पत्रकारमाथि भएको कुटपिटलगायतका घटनालाई उक्त पुस्तकमा समावेश गर्ने बताइएको छ ।

# प्राकृतिक विज्ञान संग्रहालय एक अध्ययन केन्द्र हो

*त्रिभुवन विश्वविद्यालय विज्ञान तथा प्रविधि अध्ययन संस्थान, प्राकृतिक विज्ञान संग्रहालयको (स्वयम्भु, काठमाडौं) इतिहास, त्यहाँको स्थितिबारे विज्ञान विषय लिएर अध्ययन गर्नुहुने विद्यार्थी र सर्वसाधारणको जानकारी दिने उद्देश्यले केन्द्रित भएर त्यस संग्रहालयका प्रा.डा. धर्मराज डंगोलले सहिद साप्ताहिकको लागि तयार पार्नु भएको तपाईंको सवाल हाम्रो जवाफ यहाँ प्रस्तुत छ । - स.*



**प्रा.डा. धर्मराज डंगोल**
त्रिभुवन विश्वविद्यालय
विज्ञान तथा प्रविधि अध्ययन संस्थान
प्राकृतिक विज्ञान संग्रहालय
स्वयम्भु, काठमाडौं, नेपाल ।

**१. प्राकृतिक विज्ञान संग्रहालय के हो ?**

प्राकृतिक विज्ञान सम्बन्धी अध्ययन अनुसन्धान गर्ने, प्राप्त अनुसन्धानात्मक नतिजालाई आम जनता समक्ष सू-सूचित गर्ने र जागरण गराउन तथा संकलित नमूनालाई प्रदर्शनी गर्ने एउटा छुट्टै संस्था अथवा संस्थाको जिवित अंग (निकाय) नै प्राकृतिक विज्ञान संग्रहालय हो।

**२. नेपालमा प्राकृतिक विज्ञान संग्रहालयको स्थापना कहिले र कहाँ गरिएको थियो ?**

नेपालको प्राकृतिक सम्पदाको संरक्षण गर्ने र जानकारी दिने उद्देश्यले त्रिभुवन विश्वविद्यालयबाट प्राकृतिक विज्ञान संग्रहालयको वि.सं. २०३२ श्रावण २ गतेका दिन काठमाडौंको स्वयम्भूमा स्थापना गरिएको थियो।

**३. यस्ता संग्रहालय कसले संचालन गर्दछन् ?**

हाम्रो संग्रहालय त्रिभुवन विश्वविद्यालयबाट संचालन हुन्छ।

**४. संग्रहालयको लागि आवश्यक नमूनाहरु कसरी संकलन गर्ने गर्नु हुन्छ ?**

यस संग्रहालयका वैज्ञानिकहरुले प्रकृति सम्बन्धी विभिन्न अध्ययन अनुसन्धान गर्दा वैज्ञानिक विधि अपनाई नमूनाहरु संकलन गर्ने गर्दछन् । यसका अतिरिक्त व्यक्ति वा संस्थाबाट खरिद गरिएका अथवा दानबाट प्राप्त नमूनाहरु पनि संग्रहालयमा प्रदर्शनीको लागि राखिएका हुन्छन्।

**५. यस प्राकृतिक विज्ञान संग्रहालयमा संकलित नमूनाहरु के कति छन् ?**

यस संग्रहालयको हलमा वनस्पति, जीवजन्तु, जिवावशेष र चट्टान तथा खनिज पदार्थहरुका नमूनाहरु प्रदर्शनीमा छन् । संकलित नमूनाहरुको किसिम र संख्या तलको तालिकामा देखाईएको छ ।

| जीवजन्तु | | बोट बिरुवा | | जिवावशेष | |
|---|---|---|---|---|---|
| किसिम | संख्या | किसिम | संख्या | किसिम | संख्या |
| किराफट्याङ्ग्रा (इन्सेक्टस) | २२०५३ | लेउ (अल्गी) | १२४ | जिवावशेष | ९६४ |
| अविकसित मेरूदण्डीय जीवजन्तु (लोवर कर्डेट्स) | ६ | ढुसी र च्याउ (फन्जाइ + मसरुम) | २३२० | चट्टान र खनिज पदार्थहरु (रक्स एण्ड मिनरल्स) | ७४ |
| माछा (पिसेज) | ८९० | उभयचर बिरुवा (ब्रायोफाइटस) | ११२४ | | |
| उभयचर (एम्फिबिया) | १०७ | उन्यु (टेरिडोफाइटस) | ५०७ | | |
| सरिसृप (रेप्टाइलिया) | ३९० | कोणधारी बिरुवा (जिम्नोस्पर्म) | १२३ | | |
| चराचुरुङ्गी (एभ्स) | ११९४ | बीउधारी बिरुवा (एन्जियोस्पर्म) | ५०३४ | | |
| स्तनधारी जीवजन्तु (मामलिया) | २२५ | | | | |
| अस्थिपञ्जर | २२ | | | | |
| जम्मा | २४,८८७ | | ९२३२ | | १०३८ |

**६. संग्रहालयलमा के कस्ता अनौठा नमूनाहरु छन् ?**

यहाँ हात्ति, गैंडा र मानिसको भ्रूण, काठमाडौंबाट संकलन गरिएको ९ फीट ३ इन्च लामो राजगोमन, २० फीट ४ इन्च लामो अजिंगरको काँचुली, दुई टाउके सर्प, बाखाको आठ खुट्टे पाठी, कुखुराको चार खुट्टे चल्ला, एक टाउके दुई जिउ भएको सुंगुरको पाठी, सेतो काग, रामानिपिथेकसको बंगारा, नेपालबाटै लोप भईसकेको रामगाई, संसारकै ठूलो पतङ्ग, समुद्री घोडा जस्ता अनौठा खालका नमूनाहरु संग्रहित छन्। साथै यहाँ आउने आगन्तुकहरुले थुप्रै थरीका जडिबुटीहरु, किरा खाने बिरुवाहरु, विभिन्न थरिका भ्याउ तथा च्याउहरु, जातजातका यार्सागुम्बा र बोट-बिरुवाबाट बनाईएका सर-सामानहरुको साथ साथै देशका विभिन्न कुनाकाप्चाबाट संकलन गरिएका बोट बिरुवाका हर्वेरियम नमूनाहरु पनि अवलोकन गर्न सक्दछन्।

**७. संग्रहालयले के-कस्ता प्रकाशनहरु गरेको छ ?**

देश विदेशका वैज्ञानिकहरुका प्रकृति सम्बन्धी अध्ययन अनुसन्धानका नतिजाहरुलाई वैज्ञानिक समुदाय र आम जनमानसमा पुऱ्याउने उद्देश्यले सन् १९७७ देखिनै "जर्नल अफ नेचुरल हिष्ट्री म्यूजियम" प्रकाशन गर्दै आएको छ र हाल सम्म २६ अंक प्रकाशन गरिसकेको छ। अनुसन्धानकर्ता, शिक्षाविद् र अध्ययनकर्ताहरुको आवश्यकतालाई ध्यानमा राखि "फिल्ड गाइड टु नेपालीज बटरफ्लाइज", "नेपालका सर्पहरु", र "नेपाल सिवालिक : द्योर इन्भाइरोनमेण्ट एण्ड पालियान्टोलोजिकल इम्पोर्टान्स", "एन आर्ट अफ टेक्सीडर्मी" जस्ता पुस्तकहरु यस संग्रहालयले प्रकाशन गरिएको र यी प्रकाशनहरु संग्रहालय अथवा काठमाडौं उपत्यकाका विभिन्न पुस्तक पसलहरुबाट खरिद गर्न सकिने व्यवस्था गरिएको छ।

**८. संग्रहालयको अवलोकन गर्न को-को पुग्ने गर्दछन् ?**

काठमाडौं उपत्यका र वरपरका स्कूल, कलेज र विश्वविद्यालयका विद्यार्थी तथा शिक्षक-शिक्षिकाहरु यस संग्रहालयको अवलोकन गर्न पुग्ने गर्छन्। संकलित नमूनाहरुको अवलोकनका लागि स्वदेशी तथा विदेशी पर्यटकहरु पनि संग्रहालयमा पुगेका हुन्छन्।

**९. संग्रहालय किन पुग्छन् ?**

नेपालका प्राकृतिक विज्ञानसँग सम्बन्धित विषय वस्तुलाई हेर्न, बुझ्न र आफूले पनि त्यस विषयमा केहि योगदान दिन सकिन्छ कि भनेर मनन गर्न र अन्य सहयोग गर्ने अवसर जुटाउने उद्देश्यले संग्रहालयको अवलोकन गर्न पुग्ने गर्छन्।

**१०. संग्रहालयसम्म कसरी पुग्ने ?**

क) यदि तपाई चक्रपथमा हुनुहुन्छ भने चक्रपथ घुम्ने बस, मिनिबस या माइक्रोबस चढ्नुस् र स्वयम्भूको ठूलो भगवान बुद्धको मूर्ति भएको ठाउँमा ओर्लनुस्, र मञ्जुश्री बजारको बाटोबाट ५-१० मिनेट पैदल हिँड्नुस् अनि तपाई प्राकृतिक विज्ञान संग्रहालयको ढोकामा पुग्नुहुन्छ।

ख) यदि तपाई छाउनीको राष्ट्रिय संग्रहालय र सैनिक संग्रहालय हेरेर प्राकृतिक विज्ञान संग्रहालय हेर्न चाहनुहुन्छ भने छाउनीबाट किमडोल चोक पुग्नुस् र मञ्जुश्री बजार मार्गमा २-३ मिनेट पैदल हिँड्नुस् प्राकृतिक विज्ञान संग्रहालयको बोर्ड देख्नु हुनेछ।

ग) यदि तपाई रत्नपार्क अथवा शहिद गेटमा हुनुहुन्छ भने स्वयम्भूको रुट १९ को बस चढ्नुस्, कालिमाटी-कलंकी हुँदै स्वयम्भू पुऱ्याउँछ, स्वयम्भूमा ओर्लनुस् मञ्जुश्री बजारबाट ५-१० मिनेट पैदल हिँडेर सिधै संग्रहालय पुग्न सक्नुहुनेछ।

घ) रत्नपार्कदेखि स्वयम्भू रुटको माइक्रो बस चढेर पनि संग्रहालयको गेटमा पुग्न सक्नुहुन्छ।

ङ) सुन्धारा/रत्नपार्क/शहिदगेटबाट टेम्पुमा चढी किमडोल चोकमा ओर्लनुस् र मञ्जुश्री मार्गबाट २-३ मिनेट पैदल हिँडेर संग्रहालयमा पुगिन्छ।

च) स्वयम्भू भगवानको दर्शन गरिसकेपछि यस संग्रहालयमा अवलोकन गर्न चाहनुहुन्छ भने तल मञ्जुश्री बजार हेर्नुस्, यस संग्रहालयको हल, पार्क र चउर देख्न सक्नु हुन्छ र सिढीबाट ओर्लनुस् र ठूलो प्रवेशद्वारले तपाईलाई स्वागत गरी राखेको हुनेछ।





**११. प्रदर्शनी हलमा प्रवेश गर्न कति शुल्क तिर्नु पर्छ ?**

नेपाली अथवा सार्क देशका वयस्क आगन्तुकले प्रति व्यक्ति ने.रु. २०/- र विदेशीले ने.रु. ५०/- शुल्क तिरी हलभित्र प्रवेश गर्न सकिन्छ। म्यूजियम भित्र फोटो खिच्न चाहेमा प्रति क्यामरा रु. ५०/- र भिडियो खिच्न चाहेमा प्रति मुभि क्यामराको रु.२००/- तिर्नु पर्नेछ। ५ वर्ष मुनिका बच्चाहरुलाई शुल्क लाग्दैन । स्वदेशी विद्यार्थीहरुले परिचय पत्र देखाएमा ५०% छुट दिने व्यवस्था गरिएको छ।

**१२. के संग्रहालय निश्चित समयमा मात्र खोल्ने गरिन्छ ?**

यो संग्रहालय शनिबार र सार्वजनिक विदाको दिन बाहेक अन्य दिनमा खुला रहनेछ। माघ १६ गतेदेखि कार्तिक १५ गते सम्म बिहान १० बजे देखि बेलुका ५ बजे सम्म, र कार्तिक १६ गते देखि माघ १५ गते सम्म बिहान १० बजे देखि बेलुका ४ बजे सम्म अवलोकनको लागि खुला गरिएको हुन्छ।

**१३. थप अथवा अन्य जानकारी चाहिएमा के गर्ने ?**

तपाईलाई अन्य थप जानकारी आवश्यक भएमा संग्रहालयमा पुगी वैज्ञानिकहरु अथवा त्यहाँका कर्मचारीसँग भेटनुस्। साथै संग्रहालयको वेभसाइट (www.nhmnepal.edu.np) हेरेर अथवा info@nhmnepal.edu.np मा इमेल गरेर पनि जानकारी लिन सकिन्छ। तपाईले ०१-४२७१८९९ मा फोन गरेर पनि आवश्यक जानकारी पाउन सक्नुहुन्छ। *(थप जानकारी र प्रश्नको लागि सहिद साप्ताहिकमा पत्राचार या इमेल गर्न सकिन्छ।)*

## राष्ट्रपतिलाई लिखित रुपमै जिम्मा दिनुपर्ने : का. रोहित

चितवन । नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छेंले वर्तमान राजनैतिक स्थितिमा प्रतिपक्षले आफ्नो धर्म निभाउन खोजेको र सत्ता पक्षले आफ्नो औचित्य सावित गर्न खोजिरहेको बताउनुभएको छ ।

चालू राजनैतिक अन्योल अन्त्य गर्न सरकारले राष्ट्रपतिलाई लिखित रूपमै जिम्मा दिनुपर्ने बताउँदै उहाँले कम्युनिष्टहरूको मुख्य लक्ष्य राज्य पुनःसंरचना नभई उत्पादनका मुख्य-मुख्य साधनहरू राष्ट्रियकरण गर्नु, क्रान्तिकारी भूमिसुधार लागु गर्नु, आदि भएको बताउनुभयो । 'एमाओवादी नाममात्रको कम्युनिष्ट भएको र प्रतिपक्षहरू सत्ताकेन्द्रित राजनीतिमा सीमित हुन नहुने भन्दै उहाँले दुवै पक्षमा कमजोरी रहेको कुरा प्रस्ट पार्नुभयो ।

अध्यक्ष बिजुक्छेंले सरकारका कमीकमजोरीहरूलाई सबै क्षेत्रमा पुगेर जनतामाझ पर्दाफास गर्नुपर्ने र राजधानीमा मात्र आन्दोलन सीमित राख्नु नहुने बताउनुभयो । दुई-चार राजनैतिक दल बन्द कोठामा गफ गरेर पनि राजनैतिक निकास निस्कन नसक्ने हुँदा प्रतिपक्षहरूले सशक्त आन्दोलन गर्नुपर्ने उहाँको भनाइ थियो ।

सरकारको वहिर्गमन सम्बन्धमा उहाँले मन्त्रालयहरूमा आफ्नो भाग भएन भने सही गर्दिनँ भन्ने नेताहरू नै आज मन्त्री भएको र खुलेआम बाहिरी संसारमा नेपाल भ्रष्टाचारीको पर्यायवाची बनिसकेको हुनाले भट्टराई सरकार रहिरहनु कुनै संवैधानिक र नैतिक आधार नरहेको प्रष्ट पार्नुभयो ।

*सोमबार भरतपुरस्थित रेडियो त्रिवेणीको 'आजकोसन्दर्भ' कार्यक्रममा व्यक्त विचारको अंश*

## विद्युत उत्पादन बृद्धि गरी लोडसेडिङ्ग हटाउनुपर्ने

नेपाल सरकार उर्जा मन्त्रालयले हालसम्म ६३ वटा जल विद्युत आयोजनालाई १८३५ मे.वा. विद्युत उत्पादन अनुमति दिएपनि कार्यान्वयनमा ढिलाले गर्दा नेपालमा ५३५ मे.वा.को उत्पादन गर्न नसकेर दैनिक १२ घन्टा लोडसेडिङ्गमा बस्न बाध्य छन्।

उर्जा मन्त्रालयले दिएको जानकारी अनुसार पौष र माघ महिनामा माथिल्लो खिम्ती १२ मे.वा., नागार्जुन मादी १२ मे.वा., माथिल्लो मैलुङ १४ मे.वा., सभा खोला ३ मे.वा. र दार्दी १.१० मे.वा. गरी ६ वटा जल विद्युत अयोजनाहरुलाई ५७ मे.वा. उत्पादन गर्न अनुमति दिएको छ।

नेपालको दुर्भाग्य गणतन्त्र नेपाल स्थापनासँगै सत्तामा पुगेका एमाले र माओवादी सरकारले वार्षिक १ हजार विद्युत उत्पादन गर्ने आश्वासन दिएका थिए । नेपालमा विद्युतको उच्च माग ९८८ मे.वा. मात्र छ। अहिले नेपाल विद्युत प्राधिकरणको उत्पादन २०९ मे.वा., नीजि क्षेत्रको ९२ मे.वा. भारतबाट आयात १५९ मे.वा.ले ४५३ मे.वा. मात्र आपूर्ति भैरहेका छन्।

जलसोतको धनी देशमा जलबाट उत्पादन हुने विद्युत समेत उत्पादन गर्न नसक्नु पूँजीवादी सरकारले जनताको लागि काम गर्दैन भन्ने एउटा ज्वलन्त उदाहरण हो।

**देशको विद्युत माग र आपूर्तिको अवस्था**

मिति २०६९ माघ २१ का विद्युत अवस्था निम्नानुसार रहेको छ।

| | |
|---|---|
| ने.वि.प्रा.को उत्पादन | - २०९ मे.वा |
| निजी क्षेत्रको उत्पादन | - ९२ मे.वा |
| भारतबाट आयात भएको | - १५२ मे वा |
| जम्मा आपूर्ति | - ४५३ मे.वा |
| विद्युतको उच्च माग | - ९८८ मे.वा |
| लोडसेडिङ्ग | - ५३५ मे.वा |

## जनसाहित्य समाजको तयारी भेला

टोखा, काठमाडौं । जन साहित्य समाज टोखाको आयोजनामा हुने छैटौं जन साहित्य सम्मेलन फागुन ७ गते को तयारी तीव्र रुपले भइरहेको छ। यसैक्रममा सोमबार बालविकास क्लबमा अहिलेसम्मको प्रगति विवरण र गर्नुपर्ने कार्यबारे छलफल भएका छन्।

सो भेलामा नेमकिपा काठमाडौं जिल्ला अध्यक्ष का. नारायण महर्जनले जन साहित्य समाजको छैटौं साहित्य सम्मेलनले जनताको साहित्यकार उत्पादन गर्ने थलोका रुपमा विकास हुने आशा गर्नुभयो। जनताको साहित्यकार बन्न विभिन्न मार्क्सवादी साहित्य, जीवनी, इतिहास, विभिन्न विद्वानहरुको जीवनी मेहनतका साथ अध्ययन गर्नुपर्दछ भन्नुभयो । गुणस्तरीय साहित्य र साहित्यकारले लाखौं कामदार जनताको सेवा हुने र चेतनास्तर उकास्ने भएकोले समाज यसबारे गम्भिर हुनुपर्ने बताउनुभयो । त्यसक्रममा वहाँले वर्तमान राजनीतिक अवस्था अन्योल रहेको समयमा सहि विचारले राजनैतिक निकासको लागि दवाव सृजना गर्ने हेतुले राष्ट्रियस्तरको अतिथिहरुलाई विशेष स्थान दिनुपर्ने बताउनुभयो । यसै अवसरमा प्रकाशन हुनलागेका 'जनसाहित्य समाज स्मारिका' पुस्तक अभिलेख सराहनीय बनाउन लेख, रचनाहरु पठनीय हुनुपर्ने, आकार ठूलो र धेरै पृष्ठ भन्दा सबैलाई उपयोगी हुने ढंगले प्रकाशन गर्दा सुसचित हुने बताउनुभयो ।

कार्यक्रममा नेक्रायुवा संघका केन्द्रीय सहसचिव शंकर भण्डारीले रुपन्देहीमा भएको विभिन्न साहित्यिक गतिविधिको अनुभव बताउँदै साहित्य सम्मेलन भावनामा बगेर होइन यथार्थपरक र जनमुखी हुनुपर्ने बताउनुभयो । हाम्रो साहित्य दबु जनपक्षीय विरोधीहरुले आफै पक्षले प्रयोग गर्न सक्ने, विभिन्न बाधा आउन सक्नेबारे आयोजक चनाखो हुनुपर्ने बताउनुभयो ।

कार्यक्रम समाजका अध्यक्ष शैलेन्द डंगोलको सभापतित्वमा भएको थियो। वहाँले समाजको साहित्य सम्मेलन सफल पार्न विभिन्न उपसमितिहरु गठन गरी कार्यरत रहेको बताउनुभयो।

कार्यक्रममा समाजका सल्लाहकार तथा अतिथिसत्कार संयोजक राजवीर डंगोल, अतिथि सम्पर्क तथा पत्राचार संयोजक मदन श्रेष्ठ, आर्थिक संकलन संयोजक रामलाल महर्जन, जनपरिचालन संयोजक काशिलाल डंगोल, स्मारिका प्रकाशन संयोजक शैलेस डगोल , खेलकुद प्रतियोगिता संयोजक विक्रम डंगोलले आ-आफ्नो प्रगति विवरण प्रस्तुत गर्नुभएको थियो।

## मनमैजुमा पार्टी स्थापना दिवस

नेमकिपा मनमैजु गाउँ समितिको आयोजनामा माघ २० गते शनिबार पार्टी स्थापना दिवसको अवसरमा समसामयिक राजनीतिक अवस्था विषयक विचार गोष्ठी सम्पन्न भयो।

कार्यक्रममा नेमकिपाका केन्द्रीय सदस्य सनकमान महर्जनले नेपालको कम्युनिष्ट आन्दोलनको इतिहास र पार्टी स्थापनाको बारे बोल्नुभएको थियो। पार्टीको सैद्धान्तिक अडानमा दृढ रहेकाले कुनै पनि शक्तिको अगाडि झुक्नु नपरेको स्मरण गराउनुभयो।

कार्यक्रममा काठमाडौं जिल्ला अध्यक्ष नारायण महर्जनले पार्टी स्थापनाको आधार, संशोधनवाद र आत्मसमर्पणवाद हो भन्नुभयो। नेपालको कम्युनिष्ट आन्दोलनमा खोटा विचारको खण्डन र रुसी संशोधनवाद सामाजिक सम्राज्यवादमा पटनबारे सैद्धान्तिक मतभेदले नै नेमकिपको स्थापना भएको हो भन्नुभयो।

गाउँ समितिका अध्यक्ष श्रीकुमार महर्जनको सभापतित्वमा भएको कार्यक्रममा धर्मसेन महर्जन र गीता महर्जनले पनि पार्टीको योगदानबारे बोल्नुभएको थियो।

## किन फालिन्छन् जन्मेका बच्चा ?




प्राणी मध्ये सबैभन्दा विवेकशील र सर्वश्रेष्ठ प्राणी मानिस हुन् । के गर्नु हुन्छ, के गर्नु हुँदैन एक सभ्य मानिसले तुरुन्त निर्क्यौल गरेको हुन्छ । मानिस भएकाले गल्ती हुन सक्दछ। अन्जानमा गल्ती भयो भने माफी हुन सक्छ। जानाजान गल्ती गरेमा सजायको भागी हुनैपर्दछ। समाजमा धेरै अनैतिक घटना मध्ये अनुचित गर्भ हुनु पनि एक हो ।

कसैले नचाहँदा नचाहँदै गर्भ रहन गयो भने गर्भधारण गर्न कानुनले नै व्यवस्था गरेको भने हरेक अस्पताल र क्लिनिकहरुमा त्यो सुविधा उपलब्ध छ। समाजदेखि लाज लागेर गर्भ भएको महिनादिन समय पुगेपछि बच्चा जन्मनु स्वभाविक छ । तर जन्मीसकेको बच्चा किन फालिन्छन् ?

यस्तै एउटा घटना माघ १२ गते कीर्तिपुर नपा वडा नं. १५ टौदह क्वारमा भयो । एकाबिहानै एउटा बच्चा कपडाले बेरेर प्लास्टिक झोलामा हाली फालिएको अवस्थामा स्थानीयले देखे । स्थानीयले प्रहरीलाई खबर गरी वास्तविकता पत्ता लगाउन अनुरोध गरे । त्यही दिन प्रहरीले बेवारिसे मृत बालकलाई पोष्टमार्टमको लागि अस्पताल लगेको महानगरी प्रहरी प्रभाग कीर्तिपुरले जानकारी दिनुभयो । जन्माइसकेपछि जथाभावी खेत या कतै झाङ्मा फाल्नु अपराध हो । प्रहरी र गुप्तचर संस्था, स्थानीय बासीले यस्तो जघन्य अपराध गर्नेहरुको खोजी हुनु जरुरी छ ।

अपराधीलाई पत्ता लगाई कारवाही नगरेसम्म यस्तो घटनाले फेरि फेरि समाज, ठाउँ नै बदनाम हुने गर्दछ ।

# शिशुस्याहार के हो?

**– रामप्यारी शिल्पकार, शिक्षिका**

शिशुस्याहार भनेको शिशुहरुको हेरविचार गरी स्याहार-सुसार गर्नुका साथै सन्तुलित पौष्टिक आहार खुवाई सरसफाइलाई ध्यानमा राखी दुर्घटनाबाट बचाएर सार्वाङ्गिण विकासको कार्य हो । बालबालिकाको इच्छा, भावना र आकांक्षाअनुसार जन्मेदेखि ५ वर्षसम्मको उमेरका शिशुहरुलाई म सिकिरहेको छैन, म खेलिरहेको छु भन्ने भावनाका साथै खेलाई-खेलाई स्याहार-सुसार गर्ने एक थलो वा पाठशाला हो, शिशुस्याहार तथा बालविकास केन्द्र ।

मानवको विकास गर्भ अवस्थादेखि मृत्युसम्म नै क्रमशः अगाडि बढिरहने प्रकृया हो । तैपनि सबैभन्दा संवेदनशील, गतिशील र अटुटरुपमा चलिरहने प्रक्रिया जन्मेदेखि ५ वर्ष सम्मको हो । शिशुको पहिलो ५ वर्षको उमेरमा सबै पक्षहरुका विकास हुने गति तिव्र हुन्छ । अर्थात् जन्मे देखि ५ वर्षसम्मको शिशुको मस्तिष्क ९१ प्रतिशतले विकास भइसकेको हुन्छ । यस उमेरमा उसको सिक्ने गति अत्यन्त छिटो हुन्छ र जिज्ञासु हुन्छ । उसको इच्छा आकांक्षा भावना चाहना अनुभव जिज्ञासा उत्सुकता पूर्ति गरिदिने अवसर विभिन्न किसिमको खेलहरुद्वारा खेलाई-खेलाई दिनु पर्दछ । जसको कारण शिशुहरुको सार्वाङ्गिण विकास हुनमा सकारात्मक असर पर्दछ ।

शिशु भनेको कुमालेले भाडा बनाउने मलिलो, रसिलो, नरम माटो जस्तो हुन्छ । ऊ जस्तो वातावरणमा हुर्कायो उस्तै बन्ने भएकोले राम्रो वातावरण आवश्यक छ । शिशुको इच्छा आकांक्षाअनुरुप विभिन्न क्रियाकलाप गर्ने अवसर पाएन भने उसले क्षमताअनुसार विकास हुन पाउँदैन । पछि क्रमशः उसको विकास गति बन्द हुँदै जान्छ। शिशु विकासका चार पक्षहरु मध्ये एक पक्ष मात्र विकास हुन सकेन भने त्यो अपाङ्ग भएको जस्तै हुन्छ । शारीरिक अपाङ्गपन आँखाले सजिलै देख्न, थाहा पाउन सकिन्छ । तर मानसिक तथा संवेगात्मक अपाङ्गता थाहा पाउन र देख्न सकिँदैन । सामाजिक समायोजन हुन कठिन पर्दछ । जसको कारणले बल, बुद्धि नराम्रो काममा पनि प्रयोग हुन्छ। त्यस्तै बौद्धिक पक्ष कमजोर भएमा उसले जीवनमा न त कुनै प्रगति गर्न सक्छन् त समाजलाई कुनै ठूलो योगदान दिन सक्छ । त्यसकारण शिशुहरुको पूर्ण विकासको लागि शिशु अवस्थामा सन्तुलित र उपयुक्त प्रोत्साहनको आधारशिला हामीले तयार गरिदिनु पर्दछ। गाडी गुड्नको लागि चारैवटा पाङ्ग्राको आवश्यकता हुन्छ । कुनै एक पाङ्ग्रा मात्र भएन भने गाडी गुड्न सक्दैन भने जस्तै एक शिशु सम्पूर्ण मानिस बन्नका लागि पनि शारीरिक विकास, बौद्धिक विकास, सामाजिक विकास र संवेगात्मक विकास हुन अत्यन्त जुरुरी छ ।

### शारीरिक विकास

शारीरिक विकास भन्नाले शरीरको उमेरअनुसार सम्पूर्ण अङ्गहरुको पूर्ण रुपले विकास हुनु हो। जस्तै दुई वर्षको शिशुको टाउकोको गोलाइ ४८ से.मि. हुनु, उचाइ ८१ से.मी. हुनु, शरीरको तौल १२ किलो ग्राम हुनु, हिँड्न सक्नु र ११ वटासम्म शब्द बोल्न सक्नु, ( जस्तै बस्छु, खान्छु, हिँड्छु इत्यादि) । केही शारीरिक समस्या लिएर जन्मेको हुन्छ भने कोही वातावरणबाट प्रोत्साहन पाउन नसकेर पछि परेको हुन्छ।

यस कुरामा शिशुको विकास वंशानुक्रम र वातावरण दुवैले प्रभाव पारेको हुन्छ। तसर्थ शारीरिक बृद्धि र विकास दुवै सँगसँगै हुने गर्दछ । शारीरिक बृद्धि भनेको तौल, उचाइ, गोलाइबाट थाहा पाउन सकिन्छ भने शारीरिक विकास चाँहि शिशुको क्रियाकलाप बोली र गतिविधि अनुसार थाहा पाउन सकिन्छ। शारीरिक विकास बिना कुनै किसिमको विकास हुनुको अर्थ नै हुँदैन। त्यसैले सबैभन्दा महत्वपूर्ण शारीरिक विकास हुनुपर्दछ।

### बौद्धिक विकास

बौद्धिक विकास भन्नाले शरीरका विभिन्न अंगहरु अर्थात् पाँच इन्द्रियहरुबाट सूचना दिएर सोच्ने, बुझ्ने, सुँघ्ने, स्वाद लिने, सचेत हुने, कल्पना गर्ने, फरक देखाउने, समूह छुट्याउने, बोल्न सक्ने सक्षमतालाई नै बौद्धिक विकास भन्दछ। शिशुहरुको मस्तिष्क पाँच वर्षसम्ममा ९१ प्रतिशत ले विकास हुने भएकाले अति होशियारका साथ देखाएर र बुझाएर सिकाउनु पर्दछ ।



### सामाजिक विकास

मानव जन्मजात सामाजिक प्राणी भएकोले समाजमा मिलेर जिउनको लागि चाहिने आवश्यक गुण, सिप र भावना हुनु आवश्यक छ। जस्तै शिशु एक अर्कासँग मिलेर समूहमा बस्नु, खेल्नु, माया गर्नु, दया गर्नु, ममताको भावना हुनु, एक अर्कालाई मद्दत गर्नु, पालैपालो गरी नियममा बस्नु, सरसामान ठीक ठाउँमा राख्नु, अरुको सामान नसोधी नलिने, सर-सफाइमा भाग लिनु र विभिन्न निर्देशनमा बसेर राम्रोसँग व्यवहार गर्नु नै सामाजिक विकास हो ।

### संवेगात्मक विकास

शिशुहरुको मनभित्र रहेका इच्छा, आकांक्षाहरु राम्रो नराम्रो भावनाहरुलाई विभिन्न किसिमबाट समय र वातावरण अनुसार प्रकट गरी देखाउनु नै संवेगात्मक विकास हुनु हो । जस्तै- माया, दया गर्नु, इसर्या गर्नु, रिस देखाउनु, खुशी भई हाँस्नु, रुनु, दुःखी हुनु, डर त्रास देखाउनु र निर्माण गर्नु, गीत गाउनु, चित्र कोर्नु, बुट्टा भर्नु, रङ्ग लगाउनु र सामाजिक व्यवहारको अनुकरण गरी खेल खेल्नु इत्यादि विभिन्न किसिमका क्रियाकलापहरुबाट मनको भाव प्रकट गर्नु हो ।

यी माथिका सम्पूर्ण पक्षहरुमा चिन्तन, मनन गर्दै भविष्यमा देशको एक सभ्य, दक्ष, सक्षम कर्णधार नागरिक बन्न सकोस् भन्ने उद्देश्यले भक्तपुर नगरपालिकाका जनप्रतिनिधिहरुको पहलमा २०५६ सालदेखि शिशुस्याहार केन्द्रहरु सञ्चालन भएको हो । स्थापना कालमा मासिक शुल्क रु. १५१ देखि हाल रु. ५ सयमा वडा नं. २, ५, ६, ७, १४ र १७ गरी छ वटा शिशु स्याहार तथा बालविकास केन्द्रहरु सञ्चालन गर्दै आएको छ । यी केन्द्रमा वर्षमा अढाइ सय शिशुहरुले सेवा पाइरहेका छन् ।

# साहित्य

## कविता

– रामचन्द्र महर्जन
शिक्षक, जनसेवा उमावि, पाँगा

### शुभकामना

नेपालको कम्युनिष्ट आन्दोलनमा आफ्नो बेग्लै
पहिचान कायम गर्न सफल नेमकिपा।
समाजको परिवर्तन र देशको विकासको निम्ति
आफ्नो बेग्लै सिद्धान्त बोकी संघर्षरत नेमकिपा
मार्क्सवाद, लेलिनवाद र माओत्सेतुङ्ग विचारधारा
बोकेर हिँडिरहने र बामपन्थी
अवसरवाद र दक्षिणपन्थी अवसरवादलाई
उदङ्ग्याउने नेमकिपा।
आफ्नो राजनैतिक गगनमा
स्थापना काल देखि आजसम्म कुनै प्रकारको हेरफेर नल्याउने
सैद्धान्तिक तथा राजनैतिक परिपक्वतालाई प्रदर्शित गर्ने नेमकिपा।
कम्युनिष्ट आन्दोलन र प्रजातान्त्रिक तथा मानव अधिकार प्राप्तिको
संघर्षमा एक प्रतिबद्ध गर्ने नेमकिपा
नेपालको राजनीतिमा सही र कुशल नेतृत्वमा
नि:स्वार्थ रुपले जनताको सेवा गर्न अगाडि बढ्ने नेमकिपा।
सामन्तवाद, साम्राज्यवाद, उपनिवेशवाद, बामपन्थी एवं दक्षिणपन्थी
अवसरवादको विरोध गर्ने नेमकिपा।
मोहियानी हक सुरक्षा आन्दोलन, बाली काट्ने
अभियान, भ्रष्टाचारी विरोधी संघर्ष, महङ्गी विरोधी आन्दोलन, भपाई
आन्दोलन गर्दै हिँड्ने नेमकिपा।
गाँस, बास, कपास तथा नि:शुल्क अनिवार्य शिक्षा,स्वास्थ्य
रोजगारी तथा बेरोजगारी भत्ताको व्यवस्था हुनुपर्नेमा
जोड दिँदै आइरहने नेमकिपा।
अपराधलाई राजनीतिकरण गर्ने कथित राष्ट्रिय पार्टीहरुको
फोहरी सत्ता राजनीति विरुद्ध स्वच्छ राजनीतिक परम्पराको
सडक र सदनमा आफ्नो सही दृष्टिकोण राख्दै आउने नेमकिपा।
ठू-ठूला राष्ट्रिय पार्टीहरु भनाउँदाहरुलाई
सही मार्ग दिशामा हिँड्न सल्लाह दिँदै आइरहने नेमकिपा।
जनताको हक हित तथा अधिकारका लागि
समाजवाद स्थापनाका लागि लडिरहने नेमकिपा।
३९ औं स्थापना दिवसको अवसरमा
नेमकिपालाई शुभकामना शुभकामना।

## नेपाल भाषाया बाखँ- १

……✍ बाबुराम महर्जन, नगाउँ

### सुख सयलय् च्वना च्वम्ह म्ह्याय् मचा

मां बौं या मतिना यानातम्ह याक म्ह्या साहु हिराकाजी या स्वां थें तया तम्ह। वयगु त्वनेगु तियगु पुनेगु यो थे पुंका तिका नका सुख सयल् तयातम्ह। थौं कन्हया इलय जुसा बोंका सयका सिंका तम्ह। मां बौं या अतिकं यका तम्ह हिरा शोभा बैंस जाया वगु ई जुया वलिसे जल्ग खलाया मिखा वंका हल। बसन्तया स्वांथें तच्वकं बांला स्व स्वं म्हय्सिया लो वं। गुलाफ स्वांथें मिखा वम्ह पलेस्वाँ मिखा बाँलाम्ह तच्वकं बांला हिसी मय ब्यूम्ह। काचाक स्वय्बलय् आकाशं क्व ब्वाँ बम्ह परिहे खला: धयाथें च्वं। अलय् गनं मनुतय् मिखा मवनी स्व स्व म्ह व हिरा साहुया म्ह्याय् छम्हजा गपाय च्वो बांला। तच्वकं हिसी दुम्ह ना नं हिरा शोभा ख्वानं हिराहे खका: धका मधाईपिं सुहे मदुका। वयागु खं त्वालय् देशय् बय् बय् जुया च्वनीगु वयागु बैंस २० निंदनी दयावल हिसी भय ब्यू वगागु जन्म २०४८ साल बैसाक महिना जुयाच्वन। आ:जुल २०६८ साल निंदला दतिनी दत बैंसाया इलय् गजाम्ह बां मलाम्हला। बां लाई धासा वजा झन साहुया म्ह्याय् मचा यो थे नका, पुंका, तीसा, वस धाधागु तिका थौं तम्ह कन्हय् फेसनया जमाना कलेज वंथां प्याखं स्वय्याय् वस तीसा तिना वईगु स्वया वं फेशन या वस तिसा तीयत छु लिस्वाईला ? साहुया म्हयाय् मचा मदु धयागु वयात च्यूता तायाच्वने मागु मदु। न्हु न्हुगु फेसन याना न्हु सडकय् चाह्यू वनीबलय् न्हन्याम्ह सियानं वयाके जक मिखा तइगु अहो गपाय् च्व बांलाम्ह छम्ह फिलीमया हिरोइन थें च्वका धका लिफलिफ तिना स्वया वनीगु ल्याम्ह तय् संजा पिछ्रा याईगु बुढा तय् सं जुसा सुया म्हयाय् मचाजुई गपाय्च्वं बांलाम्ह झि काय् छय् पिन्त पयन्ह ल्हाय् के जकं छ्वय् मालला।

क्रमश:

### ऐतिहासिक.....

लागि “कफी गफ” नामक कार्यक्रमको आयोजना गरी छलफल भएको छ। “कफी गफ” कार्यक्रम अन्तर्गत यो पहिलो कार्यक्रम हो। हरेक २ महिनामा कीर्तिपुर क्षेत्रका विविध विषयलाई समेटेर “कफी गफ” कार्यक्रमको आयोजना संचालन गर्ने जानकारी रबिन्द्र बहादुर प्रधानले दिनु भयो। माघ ३ गते विहान कीर्तिपुर हिलसाइड होटल एण्ड रिसोर्टमा सम्पन्न छलफलमा कीर्तिपुर, पाँगा, नगाउँ र मच्छेगाउँका विभिन्न संघसंस्थाका प्रतिनिधिहरुको सहभागिता रहेको थियो। कीर्तिपुर क्षेत्र पर्यटन विकास समाजका सह-कोषाध्यक्ष रबिन्द्र बहादुर प्रधानले सहजकर्ताको भूमिका निभाउनु भएको उक्त कार्यक्रममा नेपाल संगीत तथा नाट्य प्रज्ञा प्रतिष्ठानका सदस्य एवं प्राज्ञ राम कृष्ण दुवालले सात गाउँले जात्राको ऐतिहासिक र सांस्कृतिक पक्षको जगेर्ना गर्न र अभिलेखीकरण महत्व बारेमा धारणा राखी सुरु भएको छलफलमा कीर्तिपुर सांस्कृतिक जात्रा पर्व व्यवस्थापन समितिका अध्यक्ष टिकाराम महर्जन, मच्छेगाउँ विकास कोषका अध्यक्ष सुरेन्द्र के.सी., देव कुमार देसार, संस्कृति विषयका अध्ययेता बज्रमुनी बज्राचार्य, कर्ण महर्जन, कीर्तिपुर क्षेत्र पर्यटन विकास समाजका अध्यक्ष विजय कुमार महर्जन, महासचिव बिरेन्द्र शाक्य, भेलु जात्रा खल: गुठीका नन्द लाल महर्जन, नेपाल मण्डल टेलिभिजनका प्रताप महर्जन, रुपेन्द्र महर्जन, कीर्तिपुर कीर्ति अध्ययन तथा अनुसन्धान मण्डलका अध्यक्ष प्रयाग मान प्रधान र कीर्तिपुर दीखु विकास समितिका संयोजक वीर बहादुर महर्जनको सहभागिता रहेको थियो।

छलफलमा सहभागीहरुले सात गाउँले जात्राको ऐतिहासिकता र सांस्कृतिक महत्वका विविध विषयमा आ-आफ्ना धारण राखेको बताइएको छ। छलफलको अन्त्यमा सो सम्बन्धी गतिविधी अघि बढाउन कीर्तिपुर क्षेत्र पर्यटन विकास समाज, कीर्तिपुर सांस्कृतिक जात्रापर्व व्यवस्थापन समिति, कीर्तिपुर दीखु विकास समिति, कीर्ति अध्ययन तथा अनुसन्धान मण्डल र मच्छेगाउँ विकास कोषका एक/एक जना प्रतिनिधिहरु बैठक बसी आगामी कार्यक्रम अघि बढाउने निर्णय गरिएको छ।

### मल कारखाना......

रसायनिक मल उत्पादन गरौं' भन्ने नाराका साथ आइतबार यहाँ आयोजित सम्मान कार्यक्रममा कम्पनीका संस्थापक सदस्य गंगालाल श्रेष्ठले नेपालीहरूको सेयर लगानीबाट निकट भविष्यमा कारखाना स्थापना गरी उत्पादन थाल्ने लक्ष्य लिइएको जानकारी दिनुभयो।

उहाँले कम्पनीले ४११ मेगावाट विद्युत उत्पादन गरी १५१ मेगावाट नाइट्रोजन कलेक्सनमा प्रयोग गर्ने र त्यसबाट युरिया मल उत्पादन गर्ने योजना रहेको बताउनुभयो।

पहिलो चरणमा रसायनिक मल उत्पादन गर्न आवश्यक कच्चा पदार्थ विदेशबाट आयात गर्ने र पछि स्वदेशबाटै पूरा गर्ने लक्ष्य राखिएको छ।

कार्यक्रममा कम्पनीका केमिकल इन्जिनियर सिद्धार्थ श्रेष्ठलाई सम्मानपत्र र नगद रू.पाँचहजार प्रदान गरिएको थियो।

### भक्तपुरमा.....

गरिरहेका बिरामी रत्न श्रेष्ठको स्वास्थ्य स्थितिबारे बुझ्नुभयो। उहाँले केन्द्रमा प्रथम मृगौला प्रत्यारोपण गर्न मृगौला दान दिने रत्न श्रेष्ठका भाइ सिजन श्रेष्ठको स्वास्थ्य अवस्थासमेत जानकारी लिनुभयो।

सोही क्रममा अध्यक्ष रोहित मृगौलाको डाइलाइसिस कक्ष पुगी सेवा प्राप्त गरिरहेका रोगीहरूसँग सामान्य भलाकुसारी गर्नुभयो। उहाँले अत्याधुनिक प्रविधियुक्त अङ्गप्रत्यारोपण शल्यक्रिया कक्षहरूको समेत निरीक्षण गर्नुभएको थियो। उहाँले गत फागुनबाट सुरू नेफ्रोलोजी, युरोलोजी र प्रत्यारोपण वहिरङ्ग सेवाबारे जानकारी लिनुभयो।

केन्द्र निरीक्षणको क्रममा अध्यक्ष रोहितले मृगौला रोगको रोकथामका उपायबारे केन्द्रले सर्वसाधारण जनतालाई सचेत गर्नुपर्ने विचार राख्नुभयो। डा. श्रेष्ठले केन्द्रका विशेषज्ञहरूसमेतले विद्यालय र कलेजका शिक्षक र विद्यार्थीलाई रोगबारे जानकारी गराउनुपर्ने बताउनुभयो।

केन्द्रका कार्यकारी निर्देशक डा. पुकारचन्द्र श्रेष्ठले अध्यक्ष रोहितलाई स्वागत गरी केन्द्रका सेवाबारे जानकारी गराउनुभएको थियो। उहाँले नेपालमा ३ करोड जनतामा ३१ लाखमा मृगौलासम्बन्धी कुनै न कुनै समस्या भएको उल्लेख गर्दै केन्द्रको सञ्चालनबाट सर्वसाधारणलेसमेत उच्चकोटीको उपचार पाउने उल्लेख गर्नुभयो। उहाँको भनाइ थियो - 'विदेशमा २० लाख रूपैयाँ खर्च पर्नेमा भक्तपुरस्थित मृगौला प्रत्यारोपण केन्द्रमा १ लाखको सेवा शुल्क र ४ लाखको औषधीलगायतका सामग्री गरी ५ लाख रूपैयाँमा शल्यक्रिया हुन्छ।' डा. श्रेष्ठले केन्द्रले उत्कृष्ट सेवा प्रदान गर्ने बताउँदै भविष्यमा कलेजो, आमासय, हाडको मासि, मुटु र फोक्सोसमेतको प्रत्यारोपण सेवा सुरू गर्ने लक्ष्य रहेको उल्लेख गर्नुभयो।

निरीक्षणमा नेमकिपाका कोषाध्यक्ष एवम् भक्तपुर नगरपालिकाका जननिर्वाचित उपप्रमुख चैत्यराज शाक्य सहभागी हुनुहुन्थ्यो। केन्द्रमा एकै पटक १५ जना रोगीको मृगौलाको डाइलाइसिस गर्न सकिने व्यवस्था छ भने निकट भविष्यमा थप ५ वटा बेडको व्यवस्था हुने बताइएको छ। केन्द्र भक्तपुर अस्पतालसँगैको भवनमा सञ्चालित छ।

### एमाओवादी.....

#### आन्दोलनबाटै सत्ता झार्ने

विपक्षी ९ दलले प्रमुख शहरमा विरोध सभा गरेका छन्। विरोधसभामा सहभागीको संख्या देखेर आन्दोलनमय भएको भन्दै आन्दोलनबाटै सत्ता कब्जा गर्ने भनेका छन्। त्यसको क्रममा पहिलो चरणको कार्यक्रम २६ गते काठमाडौं खुलामञ्चमा समापन गर्दै अर्को चरणको आन्दोलन घोषणा गर्ने तयारीमा छन् विपक्षी।

#### २ दशक नछोड्ने

वर्तमान सरकारको नेतृत्व गर्नुहुने प्रम बाबुराम भट्टराईले २ दशकसम्म सत्ताबाट नहट्ने त्यसको लागि पार्टीले वातावरण सृजना गर्ने बताउनु भएको छ। विपक्षी दलको अडान कच्चा देखेपछि, सम्मेलनमा विपक्षी दलले बहिस्कार गर्न नसकेपछि विपक्षी कति तौलको आन्दोलन गर्ला भन्ने अनुमान गर्दै प्रमले २ दशक सत्ता नछाड्ने भन्नुभएको स्पष्ट छ।

#### एन के श्रेष्ठ बढी आलोचित

पार्टीका उपाधयक्ष एवं उपप्रम नारायणकाजी श्रेष्ठले विप्पा सन्धी र भारतलाई हेर्ने दृष्टिकोणमा लिखित फरक मत राखेपछि, त्यसबारे पत्रकार सम्मेलन समेत गरेको भन्दै प्रतिनिधिहरुले तीव्र आलोचना गरेका छन्। सुधारवादी कम्यूनिष्ट पूँजीवादी कम्यूनिष्ट हो। पूँजीवादमा जनताको हित गर्ने गर्दैन। त्यस्तो पार्टीले जनविरोधी कार्य गर्न कहिले पछि पर्दैन।

#### बन्द कि खुला

ठूला पार्टी भनिने एमाओवादी, माओवादी, नेका एमालेको सम्मेलन बन्दसत्र भएकै छैन। बन्दसत्रमा एउटा सिन्को तलमाथि गरेको समाचार समेत बाहिर आउने गर्दैन तर ठूला पार्टीको सबैकुरा गृह्य समेत बाहिर आउने गरेको छ। प्रचार मुखिमा केन्द्रित राजनीतिले गर्दा त्यसरी बाहिर आएको हो। राजनैतिक विशलेषकको धारण रहेको छ।



## फोटो फिचर

फोटो : प्रताप महर्जन

स्वस्थानी व्रत कथाको क्रममा सालिनदी मेलामा व्रतालु भक्तजन पुजा गर्दै (यो मेला माघ १३ देखि फागुन १४ गतेसम्म हुनेछ।)

# नवौं वर्षको अवसरमा टेलिकमद्वारा छुट

काठमाडौं । नेपाल टेलिकमले आफ्नो नवौं वार्षिकोत्सवका अवसरमा आफ्ना विभिन्न सेवाको महसुल दरमा केही छुट प्रदान गरेको छ ।

नेपाल टेलिकमका प्रबन्ध निर्देशक अमरनाथ सिंहले सोमबार दिनुभएको जानकारीअनुसार पीएसटीएन सेवाका ग्राहकहरूलाई फागुन १ गतेदेखि २०७० साल वैशाख ३१ गतेसम्म लागू हुने गरी न्यूनतम मासिक महसुल रू. २११ मा २२५ लोकल कल गर्न पाउने व्यवस्था गरिएको छ भने जीएसएम तथा सीडीएमए सेवा कम्पनीकै नेटवर्कभित्र हुने जीएमएस सेवाको विद्यमान महसुल दरमा सोमबारदेखि फागुन ३१ गतेसम्म ५१ प्रतिशत छुटको व्यवस्था गरिएको छ ।

त्यसैगरी जीएसएम र सीडीएमए मोबाइल सेवामा हाल उपलब्ध रात्रिकालीन समय (११:१६) सेवाको महसुल दरमा फागुन ३१ गतेसम्म प्रतिकल ३१ पैसा कायम गरिएको, अस्ट्रेलिया र बेलायतमा १४२४ मार्फत् हुने कल सेवामा करबाहेक प्रतिमिनेट रू. १२ रहेकोमा फागुन ३१ गतेसम्म रू.चार कायम गरेको छ ।



त्यसैगरी वाइम्याक्स प्रविधिबाट प्रदान गरिँदै आएको टाडा प्याकेजमा ११ जीबी बोनस प्रदान गरिएको कम्पनीले जनाएको छ ।

# क्रियटिभ एकेडेमीमा अभिभावक दिवस सम्पन्न

क्रियटिभ एकेडेमी कीर्तिपुरको अभिभावक दिवस शनिबार आफ्नै विद्यालय प्राङ्गणमा सम्पन्न भयो ।

त्रिविका उपकुलपति प्रा.डा. हिरा बहादुर महर्जनको प्रमुख आतिथ्यमा पानसमा दीप प्रज्ज्वलन गरी उद्घाटन गरिएको सो कार्यक्रममा वहाँले विद्यालयको प्रगतिको कामना गर्नुभयो । विद्यालयबाट अब अनुसन्धानात्मक शिक्षा दिनुपर्ने जोड दिँदै शिक्षक-शिक्षिकाले विशेष भूमिका खेल्नुपर्ने बताउनुभयो । शिक्षा आत्मनिर्भर हुने, सामाजिक प्रतिष्ठित हुन सक्ने आवश्यकता रहेको बताउनुभयो ।

त्यसक्रममा वहाँले 'हेमबहादुर महर्जन अक्षय कोष' अन्तर्गत मावि, निमावि र प्रावि तहगत उत्कृष्ट हुने विद्यार्थीहरु क्रमश: धर्ती श्रेष्ठलाई रु.२५००।-, सौगात विष्टलाई रु.२०००।, र रक्षा बस्नेतलाई रु.१५००।- नगदसहित प्रशंसापत्रबाट पुरस्कृत गर्नुभएको थियो ।

कार्यक्रममा विद्यालयका प्रधानाध्यापक बीएन पौडेलले विद्यालयको प्रगति विवरण प्रस्तुत गर्नुभएको थियो । छोटो समयमै विद्यालयबाट कीर्तिपुरवासीमा राम्रो छाप पार्न सफल भएकोले विद्यार्थीको संख्या वृद्धि भएको वहाँको भनाई थियो ।






कार्यक्रममा विद्यालयका सल्लाहकार लेखनाथ शर्माले विद्यालयको स्तर र विद्यार्थीलाई एसएलसीको नतिजाले मात्र मापन गर्न नहुने कुरा राख्दै वहाँले आफ्ना नानीहरुलाई अनुशासित र चुस्त राख्न गृहकार्यले मात्र पेल्ने मानसिकतालाई त्यागी अभिभावक स्वयंले पनि महत्वपूर्ण भूमिका निभाउनुपर्ने धारणा व्यक्त गर्नुभएको थियो ।

विद्यालय व्यवस्थापन समितिका अध्यक्ष मर्जिमान सिँहको सभापतित्वमा भएको कार्यक्रममा संस्थापक सदस्य खगेन्द्र गौतमले स्वागत मन्तव्य र अभिभावकहरुको तर्फबाट अवतार सुवेदीलगायतले विद्यालयको प्रगतिबारे बोल्नुभएको थियो ।

कार्यक्रममा विद्यार्थी भाइबहिनीहरुबाट स्वागत गीत, स्वागत नृत्यबाट सबैलाई स्वागत गर्दै विभिन्न सांस्कृतिक प्रस्तुत गरिएको थियो ।

# हिलटाउनको २० औं वार्षिक उत्सव सम्पन्न

कीर्तिपुर बाघ भैरवस्थित हिलटाउन उच्चमावि कीर्तिपुरले विद्यालयको प्राङगणमा आफ्नो स्थापनाको बीसौं बार्षिक उत्सव माघ १८ गते बिहीवार विभिन्न कार्यक्रम गरी मनाइयो ।

उक्त कार्यक्रममा स्कुल क्याप्टेन उत्प्रेक्षा गौतमले आफूले हिलटाउन स्कुलमा घरपरिवारमा जस्तै मायालु पठनपाठन हुने भएकोले आफूहरुमा लगनशील भई पढ्ने बानी विकास भएको , आत्मनिर्भर, आत्मविश्वास बढेको महसुश गरेको कुरा व्यक्त गर्नुभयो ।विद्यालयका तर्फबाट बोल्नु हुँदै सो कार्यक्रममा सभापति एवं विद्यालयका प्रिन्सिपल राजन तण्डुकारले विद्यालय स्थापनाको बीस वर्षको शुभउपलक्ष्यमा सम्पूर्ण विद्यार्थी, शिक्षक, कर्मचारी, अभिभावक एवं शुभ-चिन्तकहरुमा मंगलमय शुभकामना दिँदै विद्यालयको उत्तरोत्तर प्रगतिको कामना गर्नुभयो ।


फोटो : राजकुमार महर्जन

विद्यालय व्यवस्थापना समितिका अध्यक्ष हिराकाजी महर्जन, विद्यालय निर्देशक रमेश महर्जनको समुपस्थितिमा आयोजित सो कार्यक्रमको अन्तमा सामूहिक रुपमा विशाल केक काटेर उपस्थित सम्पूर्ण विद्यार्थी एवं शिक्षक कर्मचारीहरुलाई वितरण गरिएको थियो ।

विद्यार्थीहरुबाट विभिन्न नृत्य, गीत, चुटकिला तथा हाँस्य व्यङ्ग्य प्रस्तुत गरी हर्षोल्लासका साथ मनोरञ्जनात्मक कार्यक्रम गरियो

## स्वास्थ्य टिप्स

– प्रो. राजेन्द्र अमात्य
फिट्नेस प्वाइन्ट ट्रेडिङ



# रक्सीको कुलत एक जानकारी

रक्सी नभई नहुने वा त्यसलाई सेवन नगरी बस्नै नसक्ने वा निन्द्रा नलाग्ने स्थितिमा पुगेका मानिसलाई हामी दुर्व्यसनी भन्छौं । लागु अर्थात् लठ्याउने, नशा दिने वा झुम्म पार्ने खालका वस्तु सेवन गर्नाले व्यक्तिको चेतनामा असर गर्छ र चेतनामा असर गरेका कारण उसको सोचाइमै असर गर्छ जसबाट यसको व्यवहार पनि बदलिन्छ । एकछिन अधिसम्म राम्ररी आत्मीयतासाथ कुरा गरिरहेको व्यक्ति दुई गिलास रकसी सेवन गरेपछि झगडामा उत्रन सक्छ वा फुर्ति लगाउन, गीत गाउन, नाच्न सुरु गर्न सक्छ । यो व्यवहारमा आएका परिवर्तन उत्तेजक सोचका कारणले सम्भव भएको हो । त्यो उत्तेजक सोचको स्रोतचाहिँ दुई गिलास रक्सी नै हो ।

रक्सीले मानिसको सोचलाई उत्तेजक बनाउन सक्नुको कारण भने त्यसभित्रको नशा लाग्ने तत्व हो । यदि मानिसले कम रक्सी सेवन गरेको छ भने त्यसले व्यक्तिलाई उत्तेजक बनाउँछ: अनि बढी रक्सी सेवन गरेको भए शिथिल अर्थात् सुत्ने, झोक्राउने नबोल्ने अवस्थामा पुर्‍याउँछ । अझ त्यो भन्दा बढी सेवन गरे रक्सी सेवनकर्ताको मृत्यु नै हुन्छ ।

रक्सी सुई वा ब्राउनसुगर भन्दा खतरनाक ड्रग्स हो । नशा लाग्ने वस्तु कुनै ठूलो वा सानो हुँदैनन् । हामी कुनै मानिसको व्यवहार हेरेर यसले कति रक्सी सेवन गरेको छ भनेर अनुमान गर्न सक्छौं । नशा लाग्ने कुरा लिनेबित्तिकै व्यक्तिको चेतनाले सहि काम गर्दैन । चेतनामा असर परेपछि व्यक्तिको अनुभूति गर्ने निर्णय गर्ने, सूचना संकलन गर्ने र निष्कर्षमा पुग्ने क्षमता कम हुन्छ ।

रक्सी सेवन गरी कसैले आफूले असाध्यै माया गर्ने पत्नीमाथि हातपात गर्न सक्छ । कुनै महिलामाथि बलात्कार गर्न सक्छ । यो अनुभूति गर्न नसकेकै कारण भएको हो । रक्सीको दीर्घकालीन प्रयोगले सम्भोग क्रियामा उल्टो प्रभाव पार्दछ । रक्सी धेरै पिउने स्त्रीलाई रजस्वला हुँदा धेरै रक्तस्राव हुने वा महिना नपुग्दै बीचमै रक्तस्राव हुन सक्छ । रक्सी धेरै पिउने पति पत्नी दुवैलाई डर, अपमान, आलस्य एवं नपुंसकता हुन सक्छ । रक्सीले उत्तेजित गर्दछ, अनुत्तेजित गर्दछ, इच्छालाई जगाउँछ तर त्यसको पूर्ति गर्ने शक्तिलाई क्षीण गर्दछ । त्यसैले भनिन्छ- पहिला मान्छेले मान्छेको जीवन नै सिध्याउँछ । यदि तपाईको घर-परिवार तथा समाजमा कोहि व्यक्ति रक्सीको दुर्व्यसनी भइसकेका छन् भने तिनलाई त्यसै नछाडौं उपचारमा पठाइहाल्नुपर्छ । नत्र सोही गल्तीका कारण आफूले नसोचेका ठूलो दुर्घटना हुनसक्छ ।

# राष्ट्रव्यापी वर्कर्स कप भलिबल सुरू

भक्तपुर । आठौं राष्ट्रव्यापी वर्कर्स कप भलिबल प्रतियोगिता माघ २४ गते बुधबारबाट भक्तपुर सहिद स्मृति खेल मैदानमा सुरू भएको छ ।

बुधबार नेपाल भलिबल संघका अध्यक्ष दानबहादुर तामाङद्वारा उद्घाटन पश्चात् भएको खेलमा आर्मीले आयोजक युवा खेलकुद समूह नेपाललाई २५-१३, २५-५, २५-६ को सोझो सेटमा पराजित गरेको थियो भने दोस्रो खेलमा मध्यपुरले जिल्ला भलिबल संघ काभ्रेलाई पराजित गरेको थियो ।

प्रतियोगितामा नेपाल पुलिस क्लब, जिल्ला भलिबल संघ, काभ्रे, जावलाखेल भलिबल प्रशिक्षण क्लव, मध्यपुर खेलकुद समूह, त्रिभुवन आर्मी क्लब, नेपाल एपीएफ क्लब र आयोजक युवा खेलकुद समूह नेपाल रहेको छ ।

माघ २९ गतेसम्म चल्ने प्रतियोगिताको विजेताले ५० हजार, उपविजेताले ३० हजार, तेस्रो हुनेले २० हजार र चौथो हुनेले १० हजार नगद पाउने आयोजकले जनाएको छ ।

# प्रथम कीर्तिपुर कप बास्केटबल प्रतियोगिता हुने

नयाँबजार क्लव कीर्तिपुरको आयोजनामा यही माघ २९ गतेबाट प्रथम कीर्तिपुर कप बास्केटबल प्रतियोगिता हुने भएको छ ।




कीर्तिपुर नयाँबजार स्थित सामदायिक बास्केटबल कोर्टमा नेपालका ६ वटा टिमबीच डबल लिग प्रणालीको आधारमा खेलाइने भएको छ ।

सहभागी टिममा नेपाल आर्मी, गोल्डेन गेट, ह्वाइट हाउस, गुरुकुल, नासा र आयोजक नयाँबजार क्लव छन् ।

## माघ २१ गतेदेखि लागु गरिएको विद्युत कटौती तालिका

| समूह/बार | आईतबार | सोमबार | मंगलबार | बुधबार | बिहीबार | शुक्रबार | शनिबार |
|---|---|---|---|---|---|---|---|
| समूह-१ | ०३:००-०९:०० १३:००-१९:०० | १०:००-१७:०० २०:००-०१:०० | ०८:००-१४:०० १८:००-२४:०० | ०९:००-१५:०० १९:००-०१:०० | ०६:००-१३:०० १७:००-२२:०० | ०४:००-११:०० १५:००-२०:०० | ०४:००-१०:०० १४:००-२०:०० |
| समूह-२ | ०४:००-१०:०० १४:००-२०:०० | ०३:००-०९:०० १३:००-१९:०० | १०:००-१७:०० २०:००-०१:०० | ०८:००-१४:०० १८:००-२४:०० | ०९:००-१५:०० १९:००-०१:०० | ०६:००-१३:०० १७:००-२२:०० | ०४:००-११:०० १५:००-२०:०० |
| समूह-३ | ०४:००-११:०० १५:००-२०:०० | ०४:००-१०:०० १४:००-२०:०० | ०३:००-०९:०० १३:००-१९:०० | १०:००-१७:०० २०:००-०१:०० | ०८:००-१४:०० १८:००-२४:०० | ०९:००-१५:०० १९:००-०१:०० | ०६:००-१३:०० १७:००-२२:०० |
| समूह-४ | ०६:००-१३:०० १७:००-२२:०० | ०४:००-११:०० १५:००-२०:०० | ०४:००-१०:०० १४:००-२०:०० | ०३:००-०९:०० १३:००-१९:०० | १०:००-१७:०० २०:००-०१:०० | ०८:००-१४:०० १८:००-२४:०० | ०९:००-१५:०० १९:००-०१:०० |
| समूह-५ | ०९:००-१५:०० १९:००-०१:०० | ०६:००-१३:०० १७:००-२२:०० | ०४:००-११:०० १५:००-२०:०० | ०४:००-१०:०० १४:००-२०:०० | ०३:००-०९:०० १३:००-१९:०० | १०:००-१७:०० २०:००-०१:०० | ०८:००-१४:०० १८:००-२४:०० |
| समूह-६ | ०८:००-१४:०० १८:००-२४:०० | ०९:००-१५:०० १९:००-०१:०० | ०६:००-१३:०० १७:००-२२:०० | ०४:००-११:०० १५:००-२०:०० | ०४:००-१०:०० १४:००-२०:०० | ०३:००-०९:०० १३:००-१९:०० | १०:००-१७:०० २०:००-०१:०० |
| समूह-७ | १०:००-१७:०० २०:००-०१:०० | ०८:००-१४:०० १८:००-२४:०० | ०९:००-१५:०० १९:००-०१:०० | ०६:००-१३:०० १७:००-२२:०० | ०४:००-११:०० १५:००-२०:०० | ०४:००-१०:०० १४:००-२०:०० | ०३:००-०९:०० १३:००-१९:०० |